# संयुक्त राष्ट्रसंघको

# बडापत्र

**प्रस्तावना**

संयुक्त राष्ट्रसंघको बडापत्र माथि २६ जून, सन् १९४५ मा स्यानफ्रन्सिस्कोमा आयोजित अन्तर्राष्ट्रिय संघठबारे संयुक्तराष्ट्र सम्मेलन सम्पन्न भएपछि हस्ताक्षर भएको थियो र यो बडापत्र २४ अक्टोवर, १९४५ देखि लागू भयो । अन्तर्राष्ट्रिय न्यायालयको विधान बडापत्रको अभिन्न अङ्ग हो ।

बडापत्रका धारा २३, २७ र ६१ को महासभाद्वारा १७ डिसम्बर, १९६३ मा संशोधन गरिएको हो र ३१ अगस्त १९६५ देखि लागू भएको हो । महासभाले २० डिसम्बर, १९७१ मा धारा ६१ को पुन:संशोधन गर्‍यो जो २४ सितम्बर १९७३ देखि लागू भयो । यस्तै २० डिसम्बर १९६५ मा संशोधन भएको धारा १०९, जून १२, १९६८ देखि लागू भयो ।

धारा २३ को संशोधनबाट सुरक्षा परिषद्को सदस्यता एघार बाट १५ सम्म बढाइएको छ । संशोधित धारा २७ ले कार्यपद्धति सम्बन्धी सुरक्षा परिषद्का निर्णयहरू ९ जना सदस्यहरूको (पहिले ७ जना) सकारात्मक मतद्वारा र अरू कुरामा परिषद्का ५ स्थायी सदस्यहरूको स्वीकृति मत समेत ९ जना सदस्यहरूको (पहिले ७ जना) सकारात्मक मतद्वारा गरिनेछन् ।

३१ अगस्त, १९६५ मा लागू गरिएको धारा ६१ को संशोधनबाट आर्थिक तथा सामाजिक परिषद्को सदस्यता १८ बाट २७ बनाइएको थियो । यसपछि २४ सितम्वर, १९७३ मा लागू भएको उक्त धाराको अर्को संशोधनबाट परिषद्को सदस्य संख्या २७ बाट ५४ पुर्‍याइयो ।

उक्त धाराको पहिलो अनुच्छेदसित सम्बन्धित संशोधन अनुसार बडापत्रमाथि पुनरावलोकन गर्नलाई बोलाइने सदस्य राज्यहरूको महासम्मेलनको मिति र स्थान महासभाको दुई–तिहाई मतले र सुरक्षा परिषद्का कुनै ९ सदस्यका मतले तोकिनेछ ।

महासभाको दशौं अधिवेशनमा भएको सम्भाव्य पुनरावलोकन सम्मेलनसित सम्बन्धित धारा १०९ को अनुच्छेद ३ अन्तर्गत 'सुरक्षा–परिषद्का कुनै सात सदस्यहरूको मत' भन्ने अंश कायमै राखिएकोछ, किनकि सन् १९५५ मा महासभाले आफ्नो नियमित अधिवेशनमा र सुरक्षा–परिषद् दुवैले यसलाई पारित गरेका थिए ।

# संयुक्त राष्ट्रको बडापत्र

**संयुक्त राष्ट्रका हामी जनताहरूले**

मानव–जातिउपर अकथित दुःख हाम्रा जीवन–कालमा दुई पटक ल्याउने युद्धको मारबाट भावी सन्तानलाई बचाउन, र मौलिक मानव अधिकारहरूमा, मानवीय व्यक्तिको मर्यादा र मूल्यमा, ठूला र साना राष्ट्रहरूमा नर–नारीको समान हकमा विश्वास फेरी दृढ गराउन, तथा सन्धि र अन्तर्राष्ट्रिय कानूनका स्रोतहरूबाट उत्पन्न भएका दायित्त्व प्रति न्याय र सम्मानको स्थित कायम राख्न एवं वृहत्तर स्वतन्त्रतामा सामाजिक प्रगति र जीवनका उच्चतम स्तर बढाउन

**निश्चय गऱ्यौं,**

**अनि यी उद्देश्यकालागि**

सहिष्णुताको व्यवहार गर्न तथा असल छिमेकी भइ आपसमा शान्तिपूर्वक सँग–सँगै बस्न,र

अन्तर्राष्ट्रिय शान्ति सुरक्षा कायम गर्न आफ्नो बल संयुक्त गर्न, तथा संस्थागत प्रणाली र सिद्धान्तहरूको स्वीकृतिद्वारा, साझा हितमा बाहेक शस्त्रास्त्र शक्तिको प्रयोग गरिने छैन भन्ने सुनिश्चत गर्न, एवं अन्तर्राष्ट्रिय निकायको आयोगद्वारा समस्त जनताहरूका आर्थिक र सामाजिक उन्नतिमा अभिवृद्धि गर्ने,

**यी लक्ष्य पूरा गर्नलाई**

**संयुक्त रूपमा प्रयत्न गर्ने संकल्प गरेका छौं।**

तदनुसार, हाम्रा आ–आफ्ना सरकारहरूले सच्चा र उचित रूपमा अधिकार प्राप्त स्यानफ्रान्सिस्को नगरमा जम्मा भएका प्रतिनिधिहरू मार्फत  संयुक्त राष्ट्रको वर्तमान बडापत्रलाई मञ्जुर गरेका छन्, तथा यसद्वारा संयुक्त राष्ट्र भनी ज्ञात हुने अन्तर्राष्ट्रिय संघको स्थापना गर्दछन्।

## पहिलो अध्याय

## उद्देश्य तथा सिद्धान्त

### धारा १

**संयुक्त राष्ट्रसंघका उद्देश्यहरू  हुन्:–**

१. अन्तर्राष्ट्रिय शान्ति सुरक्षा कायम राख्ने, तथा त्यस लक्ष्य प्राप्तिका निमित्त, शान्ति भङ्ग गर्ने धम्की रोक्न र हटाउन, तथा अग्राक्रमणका काम वा अरू शान्ति भङ्ग गर्ने कार्यहरूको दमन गर्न सामूहिकरूपबाट प्रभावकारी कदमहरू

उठाउने तथा शान्ति भङ्ग गर्ने किसिमका अन्तर्राष्ट्रिय झगडा वा परिस्थितिहरू मिलाउन वा तय गर्न न्याय र अन्तर्राष्ट्रिय कानूनका सिद्धान्तहरू अनुरूप शान्तिपूर्ण ढङ्गले समाधान गराउनु;

२. समान अधिकारका र जनताहरूका आत्म–निर्णयका सम्मानमा आधारित सिद्धान्तहरूका राष्ट्रहरू बीच मैत्रीपूर्ण सम्बन्ध विकसित गर्नु तथा विश्व शान्ति बलियो तुल्याउन अन्य समुचित कदमहरू उठाउनु;

३. आर्थिक, सामाजिक, सांस्कृतिक, अथवा लोकहितका अन्तर्राष्ट्रिय समस्या समाधान गर्नमा, तथा जाति, लिङ्ग, भाषा र धर्ममा भेदभाव नराखी सबैका निमित्त मौलिक हक एवं मानव अधिकारहरू प्रति सम्मानको भाव प्रोत्साहित र विकास गर्नमा अन्तर्राष्ट्रिय सहयोग प्राप्त गर्ने; अनि

४. यी साझा उद्देश्यको प्राप्तिमा राष्ट्रहरूका कारवाईमा एकरूपता ल्याउन एउटा केन्द्र हुने ।

**धारा २**

धारा १ मा भनिएका उद्देश्यहरूको अनुसरण गर्दै यो संघ तथा यसका सदस्यहरूले तलका सिद्धान्तअनुसार काम गर्नेछन् ।

१. यो संघ यसका सबै सदस्यहरूको सार्वभौम सत्ताको समानताका सिद्धान्तमा आधारित छ;

२. सबै सदस्यहरूले, आफू सबैलाई सदस्यताबाट प्राप्त हुने अधिकार र लाभ उपभोग गर्नका निमित्त वर्तमान बडापत्र अनुसार आफूले लिएका दायित्व इमान्दारीसाथ पूरा गर्नेछन् ।

३. सबै सदस्यहरूले आफ्–आफ्ना अन्तर्राष्ट्रिय झगडा अन्तर्राष्ट्रिय शान्ति, सुरक्षा र न्यायमा आँच नआउने गरी शान्तिपूर्ण ढङ्गले मिलाउनेछन् ।

४. सबै सदस्हयरूले आफ–आफ्ना अन्तर्राष्ट्रिय सम्बन्धहरूमा कुनै पनि राज्यको प्रादेशिक अखण्डता वा राजनैतिक स्वतन्त्रताका विरूद्ध अथवा संयुक्त राष्ट्रका उद्देश्यमा नमिल्ने किसिमबाट धम्की वा शक्ति प्रयोग गर्ने छैनन् ।

५. सबै सदस्यहरूले राष्ट्र संघलाई वर्तमान वडापत्र अनुसार गर्न लागेको कुनै पनि कारवाईमा भरमगदूर सहायता दिनेछन्, तथा राष्ट्रसंघले कुनैपनि राज्यका विरूद्ध कारवाई गर्दा त्यस्तो राज्यलाई सहायता दिनेछैनन् ।

६. राष्ट्रसंघका सदस्य नभएका राज्यहरूलाई पनि अन्तर्राष्ट्रिय शान्ति सुरक्षा कायम गर्न आवश्यक परे जति हदसम्म संघले यिनै सिद्धान्तहरू बमोजिम काम गर्न निश्चित गर्नेछ ।

७. वर्तमान वडापत्रमा भएको कुनै कुराले पनि संयुक्त राष्ट्रसंघलाई कुनै राज्यको आन्तरिक अधिकार–क्षेत्रभित्रका विषयहरूमा हस्तक्षेप गर्ने अधिकार दिनेछैन, नत सदस्यहरूलाई वर्तमान बडापत्र बमोजिम समाधानका लागि यस्ता विषयहरू पेश गर्न बाध्य गराउनेछ; तर यस सिद्धान्तले अध्याय ७ अन्तर्गत कदमहरू उठाउनमा प्रतिकूल प्रभाव पार्ने छैन।

**दोस्रो अध्याय**

**सदस्यता**

**धारा ३**

संयुक्त राष्ट्रसंघका मूल सदस्य ती राज्य हुनेछन् ज–जसले स्यानफ्रान्सिस्कोमा अन्तर्राष्ट्रिय संघबारे विचार गर्न बसेको संयुक्तराष्ट्र सम्मेलनमा भाग लिएर अथवा सन् १९४२ जनवरी एक का दिन संयुक्त राष्ट्रसंघले गरेको घोषणापत्रमा पहिले नै हस्ताक्षर गरेर वर्तमान बडापत्रमा हस्ताक्षर गर्छन् तथा धारा ११० मुताबिक यसलाई अनुमोदन गर्दछन्।

**धारा ४**

१. वर्तमान बडापत्रमा भएका दायित्त्वहरू स्वीकार गर्ने तथा संघको रायमा पनि दायित्त्वहरू पालन गर्न समर्थ र इच्छुक ठहरिएका अन्य सबै शान्तिप्रिय राज्यहरूका निमित्त संयुक्तराष्ट्रसंघको सदस्यता खुला छ।

२. संयुक्त राष्ट्रमा यस्तो कुनैपनि राज्यको सदस्यता सुरक्षा परिषद्को सिफारिसमा महासभाको निर्णयद्वारा प्रदान गरिनेछ।

**धारा ५**

सुरक्षा–परिषद्बाट निवारक–वा प्रबर्तनको लाई कारवाई भइरहेको संयुक्त राष्ट्रको सदस्यलाई सदस्यताको हक तथा अधिकार प्रयोग गर्नाबाट सुरक्षा–परिषद्को सिफारिसमा महासभाद्वारा निलम्बित गर्न सकिनेछ। सुरक्षा–परिषद्ले यी हक तथा विशेषाधिकारको प्रयोग फेरि फिर्ता दिलाउन सक्नेछ।

**धारा ६**

वर्तमान बडापत्रमा भएका सिद्धान्तहरूको लगातार उल्लङ्घन गरिरहने सदस्यलाई सुरक्षा–परिषद्को सिफारिसमा महासभाले संघबाट निकाल्न सकिनेछ।

## तेस्रो अध्याय

### अङ्गहरू

### धारा ७

१. संयुक्त राष्ट्रका प्रधान अङ्गहरूका रूपमा यी स्थापित भएका छन्: महासभा, सुरक्षा–परिषद्, आर्थिक तथा सामाजिक परिषद्, जिम्मा जमानी परिषद्, अन्तर्राष्ट्रिय न्यायालय, र सचिवालय।

२. आवश्यक ठहरिएका सहायक अङ्गहरू वर्तमान बडापत्र अनुसार स्थापित गर्न सकिनेछन्।

### धारा ८

संयुक्त राष्ट्रले आफ्ना प्रधान र सहायक अङ्गहरूमा समानताका शर्तमा तथा कुनै पनि हैसियतमा भाग लिने लोग्ने–मानिस र स्वास्नीमानिस रोज्ने काममा बाधा गर्ने छैन।

**रचना**



## चौथो अध्याय

### महासभा

### धारा ९

१. संयुक्त राष्ट्रसंघका सबै सदस्यहरूबाट महासभा बन्नेछ।

२. महासभामा प्रत्येक सदस्यका पाँचजना भन्दा बढता प्रतिनिधि हुने छैनन्।

**काम र अधिकार**

### धारा १०

महासभाले वर्तमान बडापत्रका क्षेत्रभित्रका अथवा वर्तमान बडापत्रमा प्रदत्त कुनैपनि अङ्गका अधिकार र काम सम्बन्धी जुनसुकै प्रश्न वा विषयहरूमा छलफल गर्न सक्छ, तथा धारा १२ मा उल्लेख भए बाहेक संयुक्त राष्ट्रसंघका सदस्यहरूलाई वा सुरक्षा परिषद्लाई अथवा दुवैलाई यस्ता कुनै प्रश्न वा विषयमा सिफारिस गर्न सक्तछ।

**धारा ११**

१. महासभाले निरस्त्रीकरण बारेको सिद्धान्त र अस्त्रहरूको नियम लगायत अन्तर्राष्ट्रिय शान्ति सुरक्षा कायम गर्नामा सहयोगका सामान्य सिद्धान्तहरू माथि बिचार गर्न सक्छ, तथा यस्ता सिद्धान्तहरूबारे सदस्यहरू वा सुरक्षा–परिषद् अथवा दुवैलाई सिफारिस गर्न सक्तछ।

२. महासभाले संयुक्त राष्ट्रसंघका कुनै सदस्य वा सुरक्षा–परिषद् अथवा धारा ३५ को अनुच्छेद २ अनुसार संयुक्त राष्ट्रसंघको सदस्य नभएको कुनै राज्यले आफ्ना समक्ष पेश गरेको अन्तर्राष्ट्रिय शान्ति सुरक्षा कायम राख्ने सम्बन्धी जुनसुकै प्रश्नमा पनि छलफल गर्न सक्तछ, तथा धारा १२ मा निषेध गरिए बाहेक यस्तो प्रश्नबारे सम्बन्धित राज्य वा राज्यहरू वा सुरक्षा–परिषद् अथवा दुवैलाई सुझाव दिन सक्तछ। कारवाई गर्न आवश्यक देखिएको यस्तो कुनै पनि प्रश्न महासभाले छलफल गर्नु भन्दा अगाडि वा पछाडि सुरक्षा–परिषद्मा पठाउनेछ।

३. अन्तर्राष्ट्रिय शान्ति र सुरक्षा संकटमा पर्ने सम्भावना देखिएमा महासभाले सुरक्षा–परिषद्को ध्यान त्यसतर्फ आकर्षित गर्न सक्तछ।

४. यस धारामा तोकिएका महासभाका अधिकारले धारा १० का सामान्य परिधिसीमित गर्नेछैन।

**धारा १२**

१. सुरक्षा–परिषद्ले कुनै झगडा वा परिस्थितिका सम्बन्धमा, वर्तमान बडापत्रले आफूलाई सुम्पेको काम गरिरहेका बखत सुरक्षा–परिषद्ले अनुरोध नगरेसम्म महासभाले यस्तो झगडा वा परिस्थितिका सम्बन्धमा कुनै सिफारिस गर्ने छैन।

२. सुरक्षा–परिषद्को स्वीकृति लिएर महासचिवले, सुरक्षा–परिषद्ले कारवाई गरिरहेको अन्तर्राष्ट्रिय शान्ति सुरक्षा कायम गर्ने सम्बन्धी जुनसुकै विषयबारे पनि प्रत्येक अधिवेशनमा महासभालाई सूचित गर्नेछन्, तथा सुरक्षा–परिषद्ले यस्ता विषयमा कारवाई गर्न छोड्ने बित्तिकै महासभालाई अथवा महासभा नबसेका बखत संयुक्त राष्ट्रसंघका सदस्यहरूलाई त्यसैगरी सूचित गर्नेछन्।

**धारा १३**

१. महासभाले निम्न उद्देश्यका लागि अध्ययन गर्ने र सुझाव प्रस्तुत गर्ने काम गर्नेछ:

(क) राजनैतिक क्षेत्रमा अन्तर्राष्ट्रिय सहयोग बढाउने तथा अन्तर्राष्ट्रिय कानून र यसको संहिताको प्रगतिशील विकासमा प्रोत्साहन गर्ने;

(ख) आर्थिक, सामाजिक, सांस्कृतिक, शैक्षिक र स्वास्थ्य सम्बन्धी क्षेत्रमा अन्तर्राष्ट्रिय सहयोग बढाउने, तथा जाति, लिङ्ग, भाषा वा धर्ममा भेदभाव नगरीकन सबैलाई मानव अधिकार र मौलिक स्वतन्त्रता प्राप्त गराउन सहायता गर्ने।

२. माथि अनुच्छेद १ (ख) मा उल्लेख गरिएका विषय सम्बन्धी महासभाका अरू उत्तरदायित्व, काम र अधिकार अध्याय १० र ११ मा तोकिएका छन्।

**धारा १४**

धारा १२ का उपबन्धहरूका अधीनमा रही महासभाले, संयुक्त राष्ट्रका उद्देश्य र सिद्धान्तहरू तोक्ने वर्तमान बडापत्रका उपबन्धहरू भङ्ग गरिएबाट हुन आएका स्थितिसमेत, राष्ट्रहरूका बीचमा सामान्य कल्याण वा मैत्रीपूर्ण सम्बन्ध बिगार्ने सम्भावना देखिएको जुनसुकै परिस्थतिको मेलमिलापमा पनि तिनको उत्पत्तिको वास्ता नगरी, शान्तिपूर्ण व्यवस्थापनका निमित्त उपायहरू सिफारिस गर्नेछ।

**धारा १५**

१. महासभाले सुरक्षा–परिषद्‌बाट वार्षिक तथा विशेष प्रतिवेदन लिएर बिचार गर्नेछ; यी प्रतिवेदनहरूमा अन्तर्राष्ट्रिय शान्ति सुरक्षा कायम राख्न सुरक्षा–परिषद्‌ले निर्णय गरेका वा अपनाएका उपायहरूको विवरण पनि समावेश हुनेछ।

२. महासभाले संयुक्त राष्ट्रसंघका अरू अङ्गबाट पनि प्रतिवेदनहरू लिएर बिचार गर्नेछ।

**धारा १६**

महासभाले अन्तर्राष्ट्रिय न्याय–संरक्षण प्रणालीका सम्बन्धामा अध्याय १२ र १३ मा आफूलाई सुम्पिए अनुसार काम गर्नेछ। काममा सामरिक नभनिएका क्षेत्रहरूको निमित्त न्याय–संरक्षण सम्झौताहरूको स्वीकृति पनि सम्मिलित छ।

**धारा १७**

१. महासभाले संघको आयव्ययमाथि (बजेट) बिचार गरेर स्वीकृति गर्नेछ।

२. संघको खर्च महासभाले भाग लाइ दिएबमोजिम सदस्यहरूबाट बेहोरिनेछ।

३. महासभाले धारा ५७ मा उल्लेख गरिएका प्राविधिक निकाय एजेन्सीहरूसितका जुनसुकै वित्तीय र आयव्यय सम्बन्धी प्रबन्धमा बिचार गरी स्वीकृति दिनेछ, तथा सम्बन्धित एजेन्सीहरूलाई सिफारिस गर्ने मनसायले यस्ता विशेषोपयुक्त एजेन्सीहरूका प्रशासकीय आयव्यय जाँच्नेछ।

**मतदान**

**धारा १८**

१. महासभाको प्रत्येक सदस्यले एक मत दिन पाउनेछ।

२. महत्त्वपूर्ण प्रश्नहरूमा महासभाको निर्णय उपस्थित तथा मत दिने सदस्यहरूको द्वि–तृतीयांश बहुमतले गरिनु पर्दछ। यी प्रश्नहरूमा तलका विषय गाभिनेछन्: अन्तर्राष्ट्रिय शान्ति सुरक्षा कायम राख्ने सम्बन्धमा सिफारिस, सुरक्षा–परिषद्का अस्थायी सदस्यहरूको निर्वाचन, आर्थिक तथा सामाजिक परिषद्का सदस्यहरूको निर्वाचन, धारा ८६ को अनुच्छेद १(ग) अनुसार जिम्मा जमानी परिषद्का सदस्यहरूको निर्वाचन, संयुक्त राष्ट्र संघमा नयाँ सदस्यहरूको प्रवेश, सदस्यताका हक तथा विशेष अधिकारको निलम्बन सदस्यहरूको निष्काशन, न्यास–संरक्षण प्रणालीका कामकाजसम्बन्धी र आयव्ययका प्रश्नहरू।

३. द्वि–तृतीयांश बहुमतबाट निर्णय गरिनु पर्ने प्रश्नहरूका थप वर्गहरूको निर्धारण लगायत अरू प्रश्नहरूबारे, उपस्थित तथा मत दिने सदस्यहरूको बहुसंख्याबाट निर्णय गरिनेछ।

४. संघलाई वित्तीय चन्दा दिन बाँकी राख्ने संयुक्त राष्ट्रको सदस्यबाट लिनुपर्ने बक्यौताको अङ्क अघिल्ला पूरा दुई वर्षको चन्दा बराबर वा सो भन्दा बढी भयो भने त्यस्ताले महासभामा मत दिन पाउने छैन। तथापि, सदस्यको वशभन्दा बाहिरका अवस्थाले बुझाउन असमर्थ भएको कुरामा चित्त बुझेमा महासभाले त्यस्तो सदस्यलाई मत दिने अनुमति दिन सक्तछ।

**कार्यपद्धति**

**धारा २०**

महासभाको बैठक नियमित वार्षिक अधिवेशनमा तथा आवश्यकपर्दा विशेष अधिवेशनको रूपमा बस्नेछ। विशेष अधिवेशन सुरक्षा–परिषद् वा संयुक्त राष्ट्रसंघका बहुसंख्यक सदस्यहरूको अनुरोधमा महासचिवले बोलाउनेछन्।

**धारा २१**

महासभाले कार्यपद्धति सम्बन्धी आफ्नै नियमहरू प्रयोग गर्नेछ । यसले प्रत्येक अधिवेशनका लागि अध्यक्ष छान्नेछ ।

**धारा २२**

महासभाले आफ्नो काम सम्पन्न गर्नलाई आवश्यक लागे जति सहायक अङ्गहरू खडा गर्न सक्तछ ।

**पाँचौं अध्याय**

**सुरक्षा–परिषद्**

**रचना**

**धारा २३**

१. सुरक्षा–परिषद्मा संयुक्त राष्ट्रसंघका १५ जना सदस्य रहने छन् । चीन, फ्रान्स, सोभियत समाजवादी गणराज्य संघ, ग्रेट ब्रिटेन र उत्तर आयरल्याण्डको संयुक्त अधिराज्य, तथा संयुक्त राज्य अमेरिका सुरक्षा–परिषद्का स्थायी सदस्य हुनेछन् । महासभाले राष्ट्रसंघका सदस्यमध्येबाट १० जनालाई सुरक्षा–परिषद्को सदस्य छान्नेछ । यसरी छान्दा प्रथमत: अन्तर्राष्ट्रिय शान्ति सुरक्षा कायम गर्न तथा संघका अरू उद्देश्य पूरा गर्न संयुक्त राष्ट्रका सदस्यहरूले दिएको योगदान बारे विशेष रूपले, र न्यायसङ्गत भौगोलिक वितरण बारे पनि समुचित ध्यान दिइनेछ ।

२. सुरक्षा–परिषद्का अस्थायी सदस्यहरू दुई वर्षको अवधिलाई निर्वाचित हुनेछन् । अस्थायी सदस्यहरूको संख्या ११ बाट १५ सम्म बढाइएपछि अस्थायी सदस्यहरूको पहिलो निर्वाचनमा अतिरिक्त ४ सदस्यमध्ये २ को निर्वाचन एक वर्षको अवधिसम्म मात्र हुनेछ अवकाश लिने सदस्य तुरुन्तै पुनर्निर्वाचनका लागि योग्य हुनेछैन ।

३. सुरक्षा–परिषद्मा प्रत्येक सदस्यको एक प्रतिनिधि हुनेछ ।

**काम र अधिकार**

**धारा २४**

१. संयुक्त राष्ट्रसंघबाट छिटो र प्रभावकारी कारवाई गराउन यसका सदस्यहरूले अन्तर्राष्ट्रिय शान्ति सुरक्षा कायम राख्न सुरक्षा–परिषद्लाई प्राथमिक उत्तदायित्त्व दिएका छन् तथा यस उत्तरदायित्त्व अन्तर्गत आफ्नो कर्तव्य पालन गर्दा सुरक्षा–परिषद्ले तिनीहरूको निमित्त काम गर्छ भन्ने कुरामा सहमत छन् ।

२. यी कर्तव्य पालन गर्दा सुरक्षा–परिषद्‌ले संयुक्त राष्ट्रका उद्देश्य तथा सिद्धान्त अनुसार कार्य गर्नेछ। यी कर्तव्य पालन गर्नाका लागि सुरक्षा–परिषद्‌लाई दिइएका विशिष्ट अधिकारको अध्याय ६, ७, ८ र १२ मा उल्लेख गरिएकोछ।

३. सुरक्षा–परिषद्‌ले वार्षिक र, आवश्यक पर्दा, विशेष प्रतिवेदन महासभामा बिचारका लागि पेश गर्नेछ।

**धारा २५**

संयुक्त राष्ट्रका सदस्यहरू वर्तमान बडापत्र अनुसार सुरक्षा–परिषद्‌को निर्णय स्वीकार गर्न र पालन गर्न सहमत छन्।

**धारा २६**

संसारका मानवीय तथा आर्थिक साधनहरूको युद्ध सामग्रीहरूको निर्माणमा सकेसम्म कम प्रयोग गरेर अन्तर्राष्ट्रिय शान्ति सुरक्षा कायम गर्न तथा तिनको संस्थापना वृद्धि ल्याउन युद्ध सामग्रीहरूको नियमन प्रणाली बसाल्न संयुक्त राष्ट्रसंघका सदस्यहरूलाई पेश गरिने योजनाहरू धारा ४७ मा निर्दिष्ट गरिएको सैनिक–स्टाफ समितिको सहायताले तयार गर्न सुरक्षा–परिषद् उत्तरदायी हुनेछ।



**मतदान**

**धारा २७**

१. सुरक्षा–परिषद्‌को प्रत्येक सदस्यले एक मत दिन पाउनेछ।

२. कार्यपद्धति सम्बन्धी विषयमा सुरक्षा–परिषद्‌का निर्णय ९ सदस्यको एक सकारात्मक मतले गरिनेछ।

३. अरू सबै विषयमा सुरक्षा–परिषद्‌को निर्णय स्थायी सदस्यहरूको सहमति समेत ९ सदस्यका सकारात्मक मतले गरिन्छ; तर अध्याय ६ अन्तर्गत, र धारा ५२ को अनुच्छेद ३ अन्तर्गतका निर्णयहरूमा विवादसित सम्बन्ध भएको पक्षले मत दिन पाउने छैन।

**कार्यपद्धति**

**धारा २८**

१. सुरक्षा–परिषद् लगातर काम गर्न सक्ने गरी संगठित हुनेछ। यस प्रयोजनका निमित्त सुरक्षा– परिषद्‌का प्रत्येक सदस्यको प्रतिनिधि बाऱ्हैकाल संघको स्थानमा रहने छन्।

२. सुरक्षा–परिषद्‌ले समय समयमा बैठकहरू गर्नेछ । तिनमा, सदस्यहरूको इच्छा अनुसार आफ्नो सरकारका सदस्य वा कोही अरू नै विशेष रूपले निर्दिष्ट प्रतिनिधिले प्रतिनिधित्व गर्नेछन् ।

३. सुरक्षा–परिषद्‌ले संघको कार्यालय भन्दा अन्य स्थानमा अधिवेशन गर्न सक्छ, यदि परिषद्‌को बिचारमा यस्ता ठाउँबाट आफ्ना काममा सबभन्दा बढ्ता सुविधा प्राप्त हुन सक्तछ भन्ने लाग्दछ ।

**धारा २९**

सुरक्षा–परिषद्‌ले आफ्ना काम गर्नाका निमित्त आवश्यक सहायक अङ्गहरू खडा गर्न सक्तछ ।

**धारा ३०**

सुरक्षा–परिषद्‌ले अध्यक्ष रोज्ने विधिसमेत, कार्यपद्धति सम्बन्धी आफ्नै नियम प्रयोग गर्नेछ ।

**धारा ३१**

सुरक्षा–परिषद्‌को सदस्य नभएको संयुक्त राष्ट्रसंघको कुनै सदस्यका हितमा विशेष रूपले असर परेको छ भन्ने सुरक्षा परिषद्‌लाई लागेमा सो परिषद् समक्ष पेश गरिएका जुनसुकै प्रश्नको छलफलमा सो सदस्यले, मतदान–बिना, भागलिन सक्तछ ।

**धारा ३२**

सुरक्षा–परिषद्‌को सदस्य नभएको संयुक्त राष्ट्रसंघको जुनसुकै सदस्य अथवा संयुक्त राष्ट्र संघको सदस्य नभएको जुनसुकै राज्य सुरक्षा–परिषद्‌का बिचाराधीन कुनै झगडाको पक्ष छ भने त्यस्ता सदस्य वा राष्ट्रलाई झगडा–सम्बन्धी छलफलमा, मतदानबिना, भागलिन आमन्त्रण गरिनेछ संयुक्त राष्ट्रको सदस्य नभएको राज्यले भागलिने बारेमा युक्ति संगत लागेका शर्तहरू सुरक्षा–परिषद्‌ले निर्धारित गर्नेछ ।

**छैटौं अध्याय**

**झगडाको शान्तिपूर्ण समाधान**

**धारा ३३**

१. कुनै झगडा लगातार चलिरहँदा अन्तर्राष्ट्रिय शान्ति सुरक्षाको स्थिति संकटापन्न हुन सक्ने देखिएमा यस्तो झगडामा संलग्न पक्षहरूले सबभन्दा पहिले सम्झौताको कुराकानी गरेर, सोधपूछ, मध्यस्थता, मेलमिलाप, पंचनिर्णय,

न्यायिक समाधान, क्षेत्रीय निकाय वा प्रबन्धको आश्रय, अथवा तिनका आफ्नै इच्छा अनुसारका अन्य शान्तिपूर्ण उपायद्वारा समाधान खोज्नुपर्छ।

२. सुरक्षा–परिषद्ले आवश्यकता अनुसार पक्षहरूलाई आफ्ना झगडा यस्ता तरिकाद्वारा छिन्न आह्वान गर्न सक्छ।

**धारा ३४**

कुनै झगडा वा कुनै परिस्थिति रहिरहेमा अन्तर्राष्ट्रिय शान्ति सुरक्षा संकटापन्न हुने सम्भव छ कि भन्ने निश्चय गर्नाका निमित्त सुरक्षा–परिषद्ले अन्तर्राष्ट्रिय तानातानी वा झगडा उठाउन सक्ने कुनै पनि झगडा, वा परिस्थितिको छानबिन गर्न सक्तछ।

**धारा ३५**

१. संयुक्त राष्ट्रसंघको जुनसुकै सदस्यले धारा ३४ मा निर्दिष्ट किसिमका कुनैपनि झगडा, वा परिस्थिति बारे सुरक्षा–परिषद् वा महासभाको ध्यान आकर्षित गर्न सक्तछ।

२. संयुक्त राष्ट्रको सदस्य नभएको राज्यले वर्तमान बडापत्रमा दिइएका शान्तिपूर्ण व्यवस्थाका दायित्त्वहरू, झगडाका प्रयोजनका निमित्त अगावै स्वीकार गरेमा आफूपक्ष भएको झगडा सुरक्षा–परिषद् वा महासभाको ध्यानमा ल्याउन सक्तछ।

३. यस धारा अन्तर्गत, महासभाका ध्यानमा ल्याइएका विषयबारे महासभाका कारवाई धारा ११ र १२ का उपबन्दहरू बमोजिम हुनेछ।

**धारा ३६**

१. धारा ३३ मा निर्दिष्ट रूपका झगडाको वा यस्तै परिस्थितिको कुनै पनि चरणमा सुरक्षा– परिषद्ले मेल मिलापका समुचित कार्यपद्धति वा विधि सिफारिस गर्न सक्नेछ।

२. सुरक्षा–परिषद्ले झगडाको छिनाफानाका लागि पक्षहरूले पहिले नै अनुशरण गरेका कुनैपनि कार्यपद्धतिलाई बिचार गर्नुपर्छ।

३. यस धारा अन्तर्गत सिफारिस गर्नुपरेमा सामान्य तथा कानूनी झगडाहरू पक्षहरूले अन्तर्राष्ट्रिय न्यायालयका विधान बमोजिम न्यायालयमा पठाइनु पर्दछ भन्ने कुरा सुरक्षा–परिषद्ले बिचार राख्नुपर्छ।

**धारा ३७**

१. धारा ३३ मा निर्दिष्ट किसिमका झगडाका पक्षहरूले त्यस धारामा सूचित प्रक्रियाद्वारा छिनाफाना गर्न असमर्थ भएमा तिनीहरूले यस्तो झगडा सुरक्षा–परिषद्मा पठाउनेछन्।

२. सुरक्षा–परिषद्ले झगडा जारी रहँदा अन्तर्राष्ट्रिय शान्ति सुरक्षाको स्थिति साँची नै सङ्कटापन्न हुन सक्ने ठहराएमा दफा ३६ अन्तर्गत कारवाई गर्ने वा यसलाई उचित लागेका छिनाफानाका शर्तहरू सिफारिस गर्ने भन्ने बारे निर्णय गर्नेछ।

**धारा ३८**

कुनै झगडामा संलग्न सबै पक्षले अनुरोध गरेमा धारा ३३ देखि ३७ सम्मका उपबन्धहरूमा प्रतिकूल असर नपारीकन सुरक्षा–परिषद्ले पक्षहरूलाई झगडा शान्तिपूर्वक छिनाफाना गर्ने हेतुले सिफारिस गर्न सक्छ।



**सातौं अध्याय**

**शान्तिका विरूद्ध धम्की, शान्तिभङ्ग,**

**र अग्राक्रमणका सम्बन्धमा कारवाई**

**धारा ३९**

सुरक्षा–परिषद्ले शान्तिका विरूद्ध धम्की, शान्तिभङ्ग, वा अग्राक्रमणको स्थितिबारे निश्चय गर्नेछ, तथा अन्तर्राष्ट्रिय शान्ति सुरक्षा कायम गर्न वा पुन:स्थापित गर्न धारा ४१ र ४२ अनुसार कुनै कदम उठाउने भन्ने बारे निर्णय अथवा सिफारिस गर्नेछ।

**धारा ४०**

परिस्थिति अरू बिग्रन नदिन सुरक्षा–परिषद्ले धारा ३९ का उल्लिखित कदम उठाउने निर्णय वा सिफारिस गर्नु भन्दा अगाडि, सम्बन्धित पक्षलाई आवश्यक वा वाञ्छनीय ठहराए अनुसार अल्पकालिक कदमहरूमा सहमत हुन आह्वान गर्न सक्तछ। यस्ता अल्पकालिक कदमहरूले सम्बन्धित पक्षहरूका हक, दावी अथवा स्थितिमा प्रतिकूल असर पार्ने छैनन्। यस्ता अल्पकालिक कदममा सहयोग प्राप्त भएमा सुरक्षा परिषद्ले त्यस बारे मनन् गर्नेछ।

**धारा ४१**

सुरक्षा–परिषद्ले सशस्त्र शक्तिको प्रयोग बाहेक आफ्ना निर्णय कार्यान्वित गर्न कस्ता कदम उठाइन पर्ने भन्ने बारे निर्णय गर्न सक्तछ, तथा यस्ता कदमहरू लागू गर्न संयुक्त राष्ट्रका सदस्यहरूलाई अनुरोध गर्न सक्तछ । यिनमा आर्थिक सम्बन्ध र समुन्द्री, हवाई, डाँक, टेलिग्राफ, रेडियो, तथा अन्य सञ्चार साधनको पूर्ण वा आंशिक स्थगन एवं कूटनैतिक सम्बन्धको विच्छेद सम्मिलित छन् ।

**धारा ४२**

सुरक्षा–परिषद्को बिचारमा धारा ४१ मा उल्लिखित उपाय अपर्याप्त हुने वा अपर्याप्त प्रमाणित भएको लागेमा अन्तर्राष्ट्रिय शान्ति सुरक्षा कायम गर्न या परिस्थिति स्थापित गर्न आवश्यकता अनुसार वायु, समुन्द्र या स्थल–शक्तिको प्रयोग गर्न सक्नेछ । यस्तो कारवाईमा संयुक्त राष्ट्रसंघका सदस्यका हवाई, समुन्द्री, वा स्थल शक्तिद्वारा सैनिक प्रदर्शन, नाकाबन्दी तथा अरू कदम समावेश हुन सक्तछन् ।

**धारा ४३**

१. अन्तर्राष्ट्रिय शान्ति सुरक्षा कायम गर्न योगदान दिने हेतुले, संयुक्त राष्ट्र संघका सबै सदस्यहरू सुरक्षा–परिषद्लाई यसको आह्वानमा तथा विशेष सम्झौता वा सम्झौताहरू अनुसार अन्तर्राष्ट्रिय शान्ति सुरक्षा कायम गर्ने उद्देश्यका निमित्त चाहिने, बाटोको हक समेत, सशस्त्र सेना, सहायता र सुविधा उपलब्ध गराउने अभिभारा लिन्छन् ।

२. यस्तो सम्झौता या सम्झौताहरूमा सेनाका संख्या र किसिम, तिनको तयारीको मापदण्ड र स्थान, तथा दिनुपर्ने सुविधा र सहायताको रूप स्पष्ट गरिएको हुन्छ ।

३. सम्झौता वा सम्झौताहरू बारे सुरक्षा–परिषद्को तत्परतामा सकेसम्म चाँडो कुराकानी चलाइनेछ । सम्झौताहरू सुरक्षा–परिषद् र सदस्यहरूमा अथवा सुरक्षा–परिषद् र सदस्यहरूको बीच समूह हुनेछन् तथा यस्ता सम्झौताहरूको हस्ताक्षर गर्न राज्यहरूद्वारा आफ्–आफ्ना संवैधानिक रीतिअनुसार अनुमोदित हुनु पर्नेछ ।

**धारा ४४**

सुरक्षा–परिषद्ले शक्ति प्रयोग गर्ने निर्णय गरिसकेपछि, धारा ४३ अन्तर्गत लिइएका दायित्त्वहरूको पूर्तिमा सशस्त्र सेना दिन यसमा प्रतिनिधित्व नभएका सदस्यलाई अनुरोध गर्नभन्दा अगाडि यसले उक्त सदस्यलाई, निजको इच्छा भएमा आफ्ना सशस्त्र सेनाको जत्थाको सेवानियुक्ति सम्बन्धी निर्णयमा भागलिन आमन्त्रण गर्नेछ ।

**धारा ४५**

संयुक्त राष्ट्र संघलाई जरूरी सैनिक कदम उठाउन सक्ने तुल्याउन, सदस्यहरूले तत्कालै पाईन सक्ने राष्ट्रिय वायु–सेनाका जत्था संयुक्त अन्तर्राष्ट्रिय प्रवर्तन कारवाईका निमित्त जुटाउने छन्। यो सैनिक जत्थाहरूका शक्ति र तयारीको मात्रा तथा संयुक्त कार्वाहीका योजनाहरू, धारा ४३ मा निर्दिष्ट विशेष सम्झौता वा सम्झौताहरूमा निर्धारित सीमाभित्र रही सैनिक स्टाफ समितिका सहायताले सुरक्षा–परिषद्द्वारा निश्चित गरिनेछ।

**धारा ४६**

सशस्त्र सेना प्रयोग गर्ने योजना सुरक्षा–परिषद्ले सैनिक स्टाफ समितिका सहायताले बनाउनेछ।

**धारा ४७**

१. अन्तर्राष्ट्रिय शान्ति सुरक्षा कायम गर्नलाई सुरक्षा–परिषद्को सैनिक आवश्यकता सम्बन्धी सबै प्रश्नमा, यसका अधीनमा राखिएका सेनाका कमान र सेवा नियुक्तिमा, शस्त्रास्त्रको नियमनमा, र सम्भाव्य निरस्त्रीकरणमा सुरक्षा–परिषद्लाई सल्लाह दिन र सहायता गर्न एउटा सैनिक स्टाफ समिति स्थापित हुनेछ।

२. सैनिक स्टाफ समितिमा सुरक्षा–परिषद्का स्थायी सदस्यहरूका सेनाध्यक्षहरू अथवा तिनका प्रतिनिधिहरू रहनेछन्। समितिको उत्तरदायित्त्व दक्षतापूर्वक पालन गर्न समितिमा स्थायी रूपले प्रतिनिधित्त्व नगर्ने संयुक्त राष्ट्रको कुनै सदस्यले समितिको काममा भागलिनु पर्ने अवस्था परेमा त्यस्तो सदस्यलाई समितिले समितिको कार्यसित सम्वद्ध हुन आमन्त्रण गर्नेछ।

३. सुरक्षा–परिषद् अन्तर्गत सैनिक स्टाफ समिति सुरक्षा परिषद्का अधीनमा राखिएका जुनसुकै सशस्त्र सेनाको सामरिक निर्देशनका लागि उत्तरदायी हुनेछ। यस्ता सेनाका कमानसम्बन्धी प्रश्नहरूमा क्रमैसित काम गरिनेछ।

४. सैनिक स्टाफ–समितिले सुरक्षा–परिषद्बाट अधिकार लिएर तथा उपयुक्त क्षेत्रीय एजेन्सीहरूसित सल्लाह गरेर, क्षेत्रीय उपसमितिहरू खडा गर्न सक्नेछ।

**धारा ४८**

१. अन्तर्राष्ट्रिय शान्ति सुरक्षा कायम राख्न सुरक्षा–परिषद्का निर्णय लागू गर्दा गरिने कारवाहीमा, सुरक्षा–परिषद्ले निर्धारित गरिदिए अनुसार संयुक्त राष्ट्रसंघका सबै सदस्य या तिनीहरूमध्ये केहीले भागलिने छन्।

२. यस्ता निर्णयहरूको पालन संयुक्त राष्ट्रका सदस्यहरूले सोझै र आफू सदस्य भएको उपयुक्त अन्तर्राष्ट्रिय एजेन्सीहरूमा आफ्ना कारवाईद्वारा गर्नेछन् ।

**धारा ४९**

सुरक्षा–परिषद्ले निर्णय गरेका कदम चाल्न संयुक्त राष्ट्रसंघका सदस्यहरूले संयुक्त रूपमा आपसी सहयोग गर्नेछन् ।

**धारा ५०**

सुरक्षा–परिषद्ले कुनै राज्यका विरूद्ध निवारक वा प्रवर्तन कदम उठाइएकोमा, संयुक्त राष्ट्रको सदस्य भएको वा नभएको कुनै अर्को राज्यलाई यी कदम उठाउँदा खडा हुने विशेष आर्थिक समस्याहरू सामना गर्नुपर्ने हुन आएमा यी समस्याहरूको समाधानका लागि त्यसले सुरक्षा–परिषद्सित परामर्श गर्ने अधिकार पाउनेछ ।

**धारा ५१**

संयुक्त राष्ट्रसंघका कुनै सदस्यउपर सशस्त्र आक्रमण भएमा, सुरक्षा–परिषद्ले अन्तर्राष्ट्रिय शान्ति सुरक्षा कायम गर्न आवश्यक कदम नउठाउन्जेलसम्म, व्यक्तिगत वा सामूहिक आत्मरक्षाको स्वाभाविक हक उपभोग गर्न वर्तमान बडापत्रको कुनै कुराले पनि बाधा गर्ने छैन । आत्मरक्षाको यो हक प्रयोग गर्दा सदस्यहरूद्वारा उठाइएका कदम बारे तुरन्त सुरक्षा–परिषद्लाई सूचित गरिहाल्नु पर्छ तथा यी कदमहरूले वर्तमान बडापत्र अन्तर्गत सुरक्षा–परिषद्को अन्तर्राष्ट्रिय शान्ति सुरक्षा कायम गर्न वा पूर्ववत् स्थिति स्थापित गर्न आवश्यक कारवाई जहिलेसुकै गर्न अधिकार र उत्तरदायित्वलाई कुनै किसिमले पनि असर गर्ने छैनन् ।

**आठौं अध्याय**

**क्षेत्रीय प्रवन्धहरू**

**धारा ५२**

१. अन्तर्राष्ट्रिय शान्ति सुरक्षा कायम राख्ने सम्बन्धी क्षेत्रीय कदमका लागि उपयुक्त काम गर्ना निमित्त क्षेत्रीय प्रवन्ध वा एजेन्सीहरूको अस्तित्वलाई वर्तमान बडापत्रका कुनै कुराले पनि बन्देज गर्दैन, तर यस्ता प्रवन्ध वा एजेन्सीहरू र तिनका काम कारवाईहरू संयुक्त राष्ट्रका उद्देश्य तथा सिद्धान्तहरूसित मेल खाने हुनु पर्दछ ।

२. यस्ता प्रवन्धहरूमा भागलिने वा यस्ता एजेन्सीहरू निर्माण गर्ने संयुक्त राष्ट्रका सदस्यहरूले स्थानीय झगडाहरू, सुरक्षा परिषद्मा पेश गर्नुभन्दा अगाडि, यस्ता क्षेत्रीय प्रवन्धहरू वा यस्ता क्षेत्रीय एजेन्सीहरूद्वारा शान्तिपूर्वक छिनाफाना गर्न हरेक प्रयत्न गर्नेछन् ।

३. सुरक्षा–परिषद्ले सम्बन्धित राज्यहरूको तत्परतामा अथवा सुरक्षा– परिषद्बाट प्राप्त निर्देशनमा यस्ता क्षेत्रीय प्रवन्ध वा क्षेत्रीय एजेन्सीहरूद्वारा स्थानीय झगडाहरूको शान्तिपूर्वक समाधान गर्न प्रोत्साहित गर्नेछ ।

४. यस धाराले कुनै किसिमबाट पनि धारा ३४ र ३५ को प्रयोगमा बाधा गर्दैन ।

**धारा ५३**

१. उपयुक्त देखिएको खण्डमा, सुरक्षा–परिषद्ले आफ्नो अधिकार अन्तर्गत प्रवर्तन–कारवाई गर्न यस्ता क्षेत्रीय प्रवन्ध वा एजेन्सीहरूको प्रयोग गर्नेछ । तर, धारा १०७ को अनुशरणमा उल्लिखित र यस धाराको अनुच्छेद २ मा परिभाषा गरिएका कुनै शत्रु राज्यको विरूद्ध अथवा यस्ता राज्यद्वारा पुन: गरिने आक्रामक नीतिको निवारणका लागि निर्देशित क्षेत्रीय प्रवन्धमा बाहेक, क्षेत्रीय प्रवन्ध अन्तर्गत वा क्षेत्रीय एजेन्सीहरूद्वारा सम्बन्धित सरकारहरूको अनुरोधमा यस्तो कुनै राज्यद्वारा हुने आक्रमण रोक्ने उत्तरदायित्व संघले पाउन्जेलसम्म, सुरक्षा–परिषद्को अधिकार–बिना कुनै प्रवर्त्तक कारवाई गरिने छैन ।

२. यस धाराको अनुच्छेद १ मा प्रयोय गरिएको शत्रु–राज्य भन्ने शब्दले वर्तमान बडापत्रमा हस्ताक्षर गर्ने कुनै राज्यको द्वितीय विश्वयुद्धमा शत्रु भएको कुनै पनि राज्यलाई जनाउँछ ।

**धारा ५४**

अन्तर्राष्ट्रिय शान्ति सुरक्षा कायम गर्ना निमित्त क्षेत्रीय प्रवन्ध अन्तर्गत अथवा क्षेत्रीय एजेन्सीहरूद्वारा गरिएका वा बिचार गरिएका काम कारवाईको पूरा सूचना सुरक्षा–परिषद्लाई सदा दिइराख्नु पर्दछ ।

## नवौं अध्याय

## अन्तर्राष्ट्रिय आर्थिक तथा सामाजिक सहयोग

### धारा ५५

जनताहरूका समान अधिकार र आत्मनिर्णयको सिद्धान्तका सम्मानमा आधारित राष्ट्रहरूकाबीच शान्त एवं मैत्रीपूर्ण सम्बन्धका निमित्त आवश्यक स्थिरता र कल्याणको स्थिति सिर्जना गर्ने उद्देश्यले, संयुक्त राष्ट्रले देहायका कुरालाई अगाडि बढाउनेछ।

(क) जीविकाको उच्चस्तर, पूरा नियुक्ति एवं आर्थिक तथा सामाजिक प्रगति र विकासको अवस्था;

(ख) अन्तर्राष्ट्रिय आर्थिक, सामाजिक, स्वास्थ्य, र सम्बन्धित समस्याहरूका समाधान; तथा अन्तर्राष्ट्रिय सांस्कृतिक र शैक्षिक सहयोग; र

(ग) जाति, लिङ्ग, भाषा वा धर्ममा भेदभाव नगरी सबैका निमित्त मानव अधिकार र मौलिक स्वतन्त्रताका लागि विश्वव्यापि सम्मान तथा तिनको पालन।

### धारा ५६

धारा ५५ मा दिइएका उद्देश्यको सफलताका लागि सबै सदस्य संघलाई सहयोग गरी संयुक्त र पृथक कदमहरू उठाउन प्रतीज्ञा गर्दछन्।



### धारा ५७

१. अन्तर्सरकारी सम्झौताले स्थापित भएका एवं आफ–आफ्ना आधारभूत संलेखमा परिभाषा गरिए बमोजिम आर्थिक, सामाजिक, सांस्कृतिक, शैक्षिक, स्वास्थ्य र सम्बन्धित क्षेत्रहरूमा विस्तृत अन्तर्राष्ट्रिय उत्तरदायित्त्व भएका विशेषोपयुक्त एजेन्सीहरू धारा ६३ का अनुसार संयुक्त राष्ट्रसित सम्बन्धित तुल्याइनेछन्।

२. यसरी संयुक्त राष्ट्रसित सम्बन्धित तुल्याएका यस्ता एजेन्सीहरू यसपछि विशेषोपयुक्त एजेन्सी भनी निर्दिष्ट हुनेछन्।

### धारा ५८

संघले विशेषोपयुक्त ऐजेन्सीहरूको नीति र काम कारवाईको समन्वयका लागि सिफारिस गर्नेछ।

**धारा ५९**

धारा ५५ मा दिइएका उद्देश्यहरूको निमित्त चाहिने नयाँ नयाँ विशेषोपयुक्त एजेन्सीहरूको सिर्जनाका लागि संघले उपयुक्त भएका ठाउँमा सम्बन्धित राज्यहरूसित कुराकानी चलाउनेछ।

**धारा ६०**

यस अध्यायमा परेका काम चलाउने संघको उत्तरदायित्त्व महासभामा र महासभा अन्तर्गत आर्थिक तथा सामाजिक परिषद्मा निहित हुनेछ। यस प्रयोजनका निमित्त यस परिषद्ले अध्याय १० मा दिइएको अधिकारहरू पाउनेछ।

**दशौं अध्याय**

**आर्थिक तथा सामाजिक परिषद्**

**रचना**

**धारा ६१**

१. आर्थिक तथा सामाजिक परिषद्मा महासभाद्वारा निर्वाचित संयुक्त राष्ट्रसंघका ५४ सदस्य हुनेछन्।

२. अनुच्छेद ३ का उपबन्धको अधीनमा रही आर्थिक तथा सामाजिक परिषद्का १८ सदस्य हरेक साल तीन वर्षको अवधिलाई पनि निर्वाचित गरिने छन्। अवकाश प्राप्त गर्ने सदस्य तात्कालिक पुन: निर्वाचनका निमित्त योग्य हुनेछन्।

३. परिषद्को २७ सदस्य संख्याबाट बढाइ ५४ पुऱ्याइएपछि हुने पहिलो निर्वाचनमा आर्थिक तथा सामाजिक परिषद्का निमित्त चालू वर्षको अन्त्यमा अवधि समाप्त भएका ९ सदस्यको रिक्तस्थानमा निर्वाचित हुने सदस्यहरूका अतिरिक्त अरू सदस्य छानिने छन् यसरी छानिएका २७ सदस्यहरूमध्ये ९ जनाको पदावधि महासभले गरेका प्रवन्ध अनुसार एक वर्षको अन्तमा, अर्को ९ जना सदस्यको दुई वर्षको अन्तमा हुनेछ।

४.आर्थिक तथा सामाजिक परिषद्को प्रत्येक सदस्यको एक प्रतिनिधि रहनेछ।

**काम र अधिकार**

**धारा ६२**

१. आर्थिक तथा सामाजिक परिषद्ले अन्तर्राष्ट्रिय आर्थिक, सामाजिक, सांस्कृतिक, शैक्षिक, स्वास्थ्य र अन्य सम्बन्धित विषयहरूमा अध्ययन गरी प्रतिवेदन तयार गर्न सक्तछ एवं यस्ता कुनै पनि विषयमा महासभालाई, संयुक्त राष्ट्रसंघका सदस्यहरूलाई र सम्बन्धित विशेषोपयुक्त एजेन्सीहरूलाई सिफारिस गर्न सक्तछ।

२. यसले सबैका निमित्त मानव अधिकार तथा मौलिक स्वतन्त्रताका सम्मान र पालनमा अभिवृद्धि गर्ने प्रयोजनका लागि सिफारिस गर्न सक्तछ।

३. आफ्ना अधिकारभित्र परेका विषयहरूका सम्बन्धामा, यसले महासभामा पेश गर्न मस्यौदा सम्झौताहरू तयार गर्न सक्तछ।

४. संयुक्त राष्ट्रले निहित गरिदिएका नियम मुताबिक, आफ्ना अधिकारभित्र परेका विषयहरूमा अन्तर्राष्ट्रिय सम्मेलन बोलाउन सक्तछ।

**धारा ६३**

१. आर्थिक तथा सामाजिक परिषद्ले धारा ५७ मा निर्दिष्ट कुनै पनि एजेन्सीहरूसित सम्बन्धित एजेन्सीको राष्ट्रसंघसित कुन किसिमको सम्बन्ध हुने हो सो शर्तहरूको परिभाषा गरेर, सम्झौता गर्न सक्तछ। यस्ता सम्झौताहरू महासभाबाट स्वीकृत हुनु पर्दछ।

२. यसले यस्ता एजेन्सीहरूसित परामर्श गरेर तिनलाई सुझाव दिएर तथा महासभा र संयुक्त राष्ट्रसंघका सदस्यहरूलाई सुझाव दिएर कार्य समन्वय गर्न सक्तछ।

**धारा ६४**

१. आर्थिक तथा सामाजिक परिषद्ले विशेषोपयुक्त एजेन्सीहरूबाट नियमित रूपमा प्रतिवेदन प्राप्त गर्न उपयुक्त कारवाई गर्न सक्छ। परिषद्ले आफ्नै सिफारिसहरू र आफ्ना अधिकारभित्र परेका विषयहरू उपर महासभाले गरेका सिफारिसहरू कार्यान्वित गराउन लिइएका कदम बारे संयुक्त राष्ट्रका सदस्यहरू र विशेषोपयुक्त एजेन्सीहरूबाट प्रतिवेदन प्राप्त गर्न प्रवन्ध गर्न सक्छ।

२. यसले यी प्रतिवेदनहरू माथि आफ्ना प्रतिक्रिया महासभालाई अवगत गराउन

सक्तछ।

**धारा ६५**

आर्थिक तथा सामाजिक परिषद्ले सुरक्षा–परिषद्लाई आवश्यक जानकारी दिन सक्छ तथा सुरक्षा–परिषद्को अनुरोधमा यसलाई सहायता गर्नेछ।

**धारा ६६**

१. महासभाका सिफारिसहरू पालन गर्ने सिलसिलामा आर्थिक तथा सामाजिक परिषद्ले आफ्ना अधिकारभित्र परेका जति काम गर्नेछ।

२. यसले महासभाको स्वीकृति लिएर संयुक्त राष्ट्र संघका सदस्यहरूको र विशेषोपयुक्त एजेन्सीहरूको अनुरोधमा सेवा प्रदान गर्न सक्तछ।

३. यसले वर्तमान बडापत्रमा अन्यत्र उल्लिखित अथवा महासभाले सुम्पेका अरू काम पनि गर्नेछ।

**मतदान**

**धारा ६७**

१. आर्थिक तथा सामाजिक परिषद्को प्रत्येक सदस्यले एक मत दिन पाउनेछ।

२. आर्थिक तथा सामाजिक परिषद्का निर्णय उपस्थित तथा मत दिने सदस्यहरूको बहुसंख्याबाट हुनेछन्।

**धारा ६८**

आर्थिक तथा सामाजिक परिषद्ले आर्थिक र सामाजिक क्षेत्रहरूमा औ मानव–अधिकारको अभिवृद्धिका लागि आयोग, एवं आफ्ना काम गर्नाको निमित्त चाहिए जति अरू आयोगहरू पनि स्थापित गर्नेछ।

**धारा ६९**

आर्थिक तथा सामाजिक परिषद्ले संयुक्त राष्ट्र संघको जुनसुकै सदस्यलाई, सो सदस्यसित विशेष सम्बन्ध भएको कुनै विषय उपर गरिने बिचार विमर्शमा मत दिन नपाउने गरी, भागलिन आमन्त्रण गर्नेछ।

**धारा ७०**

आर्थिक तथा सामाजिक परिषद्‌ले विशेषोपयुक्त एजेन्सीहरूका प्रतिनिधिलाई, मत दिन नपाउने गरी, आफ्ना र आफूले खडा गरेका आयोगहरूका बिचार विमर्शमा भागलिन, एवं आफ्ना प्रतिनिधिहरूलाई विशेषोपयुक्त एजेन्सीहरूका बिचार विमर्शमा भागलिने प्रवन्ध गर्न सक्तछ।

**धारा ७१**

आर्थिक तथा सामाजिक परिषद्‌ले आफ्नो अधिकारभित्रका विषयहरूसित सम्बन्ध भएका गैर–सरकारी संस्थाहरूसँग परामर्श गर्न यथोचित प्रवन्ध गर्न सक्तछ। यस्ता प्रवन्ध अन्तर्राष्ट्रिय संस्थाहरूसित तथा, उपयुक्त भएका ठाउँमा, संयुक्त राष्ट्रको सम्बन्धित सदस्यसित परामर्श गरेर राष्ट्रिय संस्थाहरूसित गर्न सकिनेछ।

**धारा ७२**

१. आर्थिक तथा सामाजिक परिषद्‌ले अध्यक्ष रोज्ने विधिसमेत, कार्यपद्धति बारे आफ्नै नियम प्रयोग गर्नेछ।

२. आफ्ना नियम अनुसार आवश्यक पर्दा आर्थिक तथा सामाजिक परिषद्‌को बैठक बस्नेछ। यी नियमहरूमा यसका सदस्यहरूको बहुसंख्याको अनुरोधमा बैठक बोलाउने व्यवस्था पनि सम्मिलित छ।



## एघारौं अध्याय

## अ–स्वशासित प्रदेशबारेको घोषणा

**धारा ७३**

पूर्ण स्व–शासन प्राप्त गरिनसकेका जनता भएका प्रदेशहरूको प्रशासनका निमित्त उत्तरदायित्व लिएका वा लिने संयुक्त राष्ट्रसंघका सदस्यहरू यस्ता प्रदेशका बासिन्दाहरूको हित सर्वोपरि हुन्छ भन्ने सिद्धान्तलाई मान्यता दिन्छन् तथा वर्तमान बडापत्रले स्थापित गरेका अन्तर्राष्ट्रिय शान्ति सुरक्षाको प्रणाली भित्र रही, यस्ता प्रदेशका बासिन्दाहरूको कल्याणमा सकेसम्म वृद्धि गर्ने दायित्वलाई पवित्र नासो मान्दछन्, एवं यस उद्देश्यका लागि:

क. सम्बन्धित जनताको संस्कृतिको उचित आदर गर्दै तिनलाई राजनैतिक आर्थिक, सामाजिक र शैक्षिक प्रगति, न्यायिक व्यवहार, हासिल गराउन तथा दुरूपयोगबाट तिनको संरक्षण गर्न;

ख. प्रत्येक प्रदेश तथा त्यहाँका जनताको खास अवस्था र तिनको प्रगतिको विविध स्थिति अनुसार, स्वशासन विकसित गर्न, जनताहरूका राजनैतिक आकांक्षाहरूमा उचित ध्यान दिन, एवं स्वतन्त्र राजनैतिक संस्थाहरूको प्रगतिशील विकासमा तिनीहरूलाई सहायता गर्न;

ग. अन्तर्राष्ट्रिय शान्ति र सुरक्षा बढाउन;

घ. विकासका रचनात्मक कदमहरूमा वृद्धि ल्याउन, अनुसन्धानमा प्रोत्साहन गर्न, र आफू–आफूमा तथा, उपयुक्त भएका स्थान र समयमा, यस धारामा दिइएका सामाजिक, आर्थिक र वैज्ञानिक प्रयोजनहरूको क्रियात्मक सफलताका लागि विशेषोपयुक्त अन्तर्राष्ट्रिय निकायहरूसित सहयोग गर्न, एवं

ङ. सुरक्षा र संवैधानिक प्रश्नका सीमाभित्र रही, अध्याय १२ र १३ लागू हुने प्रदेशहरू बाहेक आफू उत्तरदायी भएका प्रदेशहरूका आर्थिक, सामाजिक र शैक्षिक अवस्था सम्बन्धी प्राविधिक तथ्याङ्कमूलक तथा अरू जानकारी महासचिवलाई बोधार्थ नियमित रूपले पठाउन ।

**धारा ७४**

यो अध्याय लागू हुने प्रदेशहरूका सम्बन्धमा, आफ्ना क्षेत्र भन्दा कति फरक नगरी आफ्नो नीति असल–छिमेकीपनाको सामान्य सिद्धान्तमा आधारित गर्नुपर्छ भन्ने कुरामा संयुक्त राष्ट्रसंघको सदस्यहरू सहमत छन् यसो गर्दा सामाजिक, आर्थिक र व्यापार–सम्बन्धी विषयमा बाँकी संसारको हित र कल्याणबारे पनि उचित बिचार राख्नुपर्छ ।



## बाह्रौं अध्याय

## अन्तर्राष्ट्रिय जिम्मा जमानी प्रणाली

**धारा ७५**

संयुक्त राष्ट्रसंघले पछिपछिका छुट्टै सम्झौताहरूद्वारा राखिएका प्रदेशहरूका प्रशासन र सुपरीवेक्षण लागि आफ्ना अधिकार अन्तर्गत एक अन्तर्राष्ट्रिय जिम्मा जमानी प्रणाली स्थापित गर्नेछ । यसपछि यी प्रदेशहरूलाई जिम्मा जमानी प्रवेश भनी तोकिएको छ ।

**धारा ७६**

वर्तमान बडापत्रको धारा १ मा दिइएका संयुक्त राष्ट्रसंघको उद्देश्य अनुसार जिम्मा जमानी प्रणालीका आधारभूत लक्ष्य देहाय बमोजिम हुनेछन् ।

क. अन्तर्राष्ट्रिय शान्ति सुरक्षा बढाउने;

ख. प्रत्येक प्रदेश र त्यहाँका जनताको विशेष स्थिति तथा सम्बन्धित जनताका स्वतन्त्रतापूर्वक प्रकट गरिएका इच्छानुसार, एवं प्रत्येक जिम्मा जमानी सम्झौताका शर्तले दिए बमोजिम, र उपयुक्त देखिएसम्म न्यास– संरक्षण प्रदेशहरूका बासिन्दाको राजनैतिक, आर्थिक, सामाजिक, र शैक्षिक प्रगति, तथा स्वशासन वा स्वतन्त्रतालाई तिनको प्रगतिशील विकासमा वृद्धि ल्याउने;

ग. जाति, लिङ्ग, भाषा वा धर्ममा भेदभाव नराखि सबैका लागि मानव–अधिकार र मौलिक स्वतन्त्रताको सम्मान गर्न प्रोत्साहन गर्ने तथा संसारका जनताहरूबीच आपसी निर्भरतालाई अङ्गीकार गर्न प्रोत्साहन गर्ने;

घ. संयुक्त राष्ट्रसंघका सबै सदस्यहरू र तिनका जनताहरूका निमित्त सामाजिक, आर्थिक, र वाणिज्य विषयमा समान व्यवाहर तथा पूर्वगामी लक्ष्यहरूको प्राप्तिमा प्रतिकूल असर नपारी एवं धारा ८० का शर्तभित्र रही न्याय–वितरणमा समेत ती जनताहरूका निमित्त समान व्यवहार उपलब्ध गराउने ।

**धारा ७७**

१. जिम्मा जमानी सम्झौताले राखिएका निम्नलिखित प्रकारका प्रदेशमा न्यास–संरक्षण प्रणाली लागू हुनेछ;

क. हाल अधिदेश (म्याण्डेट) अन्तर्गत रहेका प्रदेशहरू:

ख. द्वितीय विश्वयुद्धको परिणामस्वरूप शत्रुराज्यहरूबाट छुट्याइन सक्ने प्रदेशहरू; र

ग. राज्यहरूद्वारा प्रशासित तर प्रणाली अन्तर्गत स्वेच्छापूर्वक राखिएका प्रदेशहरू ।

२. उल्लेख गरिएका प्रकारका कुन कुन प्रदेश के के शर्तमा जिम्मा जमानी प्रणाली अन्तर्गत ल्याइने हुन् भन्ने कुराको पछिका सम्झौताहरूद्वारा टुङ्गो लगाइनेछ ।

**धारा ७८**

संयुक्त राष्ट्रसंघका सदस्य भइसकेका प्रदेशहरूमा जिम्मा जमानी प्रणाली लागू हुनेछैन । यी प्रदेशहरूबीचको सम्बन्ध सम्पूर्ण प्रभुत्व सम्पन्न समानताका सिद्धान्तको सम्मानमा आधारित हुनेछ ।

**धारा ७९**

जिम्मा जमानी प्रणाली अन्तर्गत राखिने प्रत्येक प्रदेशको जिम्मा जमानीका शर्तहरू, कुनै परिवर्तन वा संशोधन हुने भए सो समेत, प्रत्यक्षरूपले सम्बन्धित राज्यहरू र संयुक्त राष्ट्रसंघका सदस्यले अधिदेशक–शक्ति समेतबाट मञ्जुर गरिनेछन्, तथा धारा ८३ र ८५ का उपबन्ध बमोजिम स्वीकृत हुनेछन्।

**धारा ८०**

१. प्रत्येक प्रदेशलाई जिम्मा जमानी प्रणाली अन्तर्गत राख्न धारा ७७, ७९ र ८१ अन्तर्गत मञ्जुर गरिएका व्यक्तिगत न्यास–संरक्षण सम्झौताहरूमा बाहेक, र यस्ता सम्झौताहरू सम्पन्न नहोउन्जेलसम्म, यस अध्यायको कुनै कुराको पनि कुनै प्रकारले कुनै राज्यको वा जनताको जस्तोसुकै हक वा संयुक्त राष्ट्रका सदस्यहरू पक्ष भएका विद्यमान अन्तर्राष्ट्रिय संलेखका शर्तहरू बदल्न सक्ने भन्ने अर्थ लाग्ने छैन।

२. अधिदिष्ट र अरू प्रदेशहरूलाई धारा ७७ मा दिइएका उपबन्ध अनुसार जिम्मा जमानी प्रणाली अन्तर्गत राख्नाका निमित्त कुराकानी गर्न र सम्झौताहरूको विलम्व हुने अथवा स्थापित गर्न भन्ने यस धाराको अनुच्छेद १ को अर्थ लाग्नेछैन।



**धारा ८१**

न्यास–संरक्षण सम्झौताले प्रत्येक स्थितिमा ती शर्तहरू सम्मिलित गर्नेछ जसको अन्तर्गत जिम्मा जमानी प्रदेश प्रशासित हुनेछ, तथा न्यास–संरक्षण–प्रदेशको प्रशासन गर्ने अधिकारी तोक्नेछ। यसपछि प्रशासक अधिकारी भनिएको यस्तो अधिकारी एक वा बढी राज्य अथवा संघ आफैं पनि हुन सक्तछ।

**धारा ८२**

कुनैपनि जिम्मा जमानी सम्झौतामा, सम्झौता लागू हुने जिम्मा जमानी प्रदेशको केही वा जम्मै भाग धारा ४३ अन्तर्गत गरिएका कुनै विशेष सम्झौता वा सम्झौताहरूमा प्रतिकूल असर नपारी सामरिक महत्त्वको स्थल वा स्थलहरू भनी निर्दिष्ट हुन सक्तछन्।

**धारा ८३**

१. सामरिक महत्त्वका स्थलहरू सम्बन्धी संयुक्त राष्ट्रका सारा काम, जिम्मा जमानी सम्झौताका शर्त र तिनको परिवर्तन वा संशोधनको स्वीकृति समेत, सुरक्षा परिषद्द्वारा गरिनेछ।

२. धारा ७६ मा उल्लिखित आधारभूत लक्ष्यहरू सामरिक महत्त्वका प्रत्येक स्थलका जनतालाई पनि लागू हुनेछ।

३.जिम्मा जमानी सम्झौताहरू अन्तर्गत रही तथा सुरक्षा सम्बन्धी कुरामा प्रतिकूल असर नपारी सुरक्षा–परिषद्ले, सामरिक महत्त्वका स्थलहरूका राजनैतिक, आर्थिक, सामाजिक र शैक्षिक मामलामा न्यास–संरक्षण–प्रणाली अन्तर्गत संयुक्त राष्ट्रसंघको काम गर्न जिम्मा जमानी परिषद्को सहयोग लिनेछ।

**धारा ८४**

अन्तर्राष्ट्रिय शान्ति सुरक्षा कायम राख्न जिम्मा जमानी प्रदेशलाई आफ्नो दायित्त्व पालन गराउनु प्रशासक अधिकारीको कर्तव्य हुनेछ। यस उद्देश्यका लागि प्रशासक अधिकारीले, सुरक्षा–परिषद्प्रति यस सम्बन्धामा प्रशासक अधिकारीले लिएको दायित्त्व पूरा गर्न तथा जिम्मा जमानी प्रदेशभित्र कानूनी व्यवस्था कायम राख्न र स्थानीय प्रतिरक्षाका लागि जिम्मा जमानी प्रदेशबाट पाइने स्वयंसेवक शक्ति, अरू सुविधा र सहायताको प्रयोग गर्न सक्तछ।

**धारा ८५**

१. सामरिक महत्त्वका भनी नतोकिएका अरू स्थलहरूका लागि जिम्मा जमानी सम्झौताहरूका शर्त, तिनको परिवर्तन र संशोधनको स्वीकृतिसमेत, संयुक्त राष्ट्रसंघको काम महासभाले गर्नेछ।

२. महासभाको अधीनमा काम गर्ने जिम्मा जमानी परिषद्ले यी कामकाज चलाउन महासभालाई सहायता गर्नेछ।



**तेह्रौं अध्याय**

**जिम्मा जमानी परिषद्**

रचना

**धारा ८६**

१. जिम्मा जमानी परिषद्मा संयुक्त राष्ट्रसंघका निम्नलिखित सदस्यहरू रहनेछन:

(क) जिम्मा जमानी प्रदेश प्रशासन गर्ने सदस्यहरू;

(ख) जिम्मा जमानी प्रदेश प्रशासन नगर्ने, तर धारा ३३ मा नाउँ उल्लेख भएका सदस्यहरू; तथा

(ग) जिम्मा जमानी परिषद्का सदस्यहरूको पूर्ण संख्या जिम्मा जमानी प्रदेश प्रशासन गर्ने तथा नगर्ने संयुक्त राष्ट्र संघका सदस्यहरूबीच समान रूपले विभाजित भएको छ भनी निश्चित गर्न आवश्यक परे जति तीन वर्षको अवधिलाई महासभाद्वारा निर्वाचित अरू सदस्यहरू।

२। जिम्मा जमानी परिषद्को प्रत्येक सदस्यले एक विशेष योग्य व्यक्तिलाई त्यहाँ आफ्नो प्रतिनिधि मनोनीत गर्नेछ।

**काम र अधिकार**

**धारा ८७**

महासभा र, यसको अधीनमा रही जिम्मा जमानी परिषद्ले देहाय बमोजिम काम गर्न सक्तछन्:

(क) प्रशासक अधिकारीले पेश गरेका प्रतिवेदनहरूमा बिचार गर्ने;

(ख) विन्तिपत्र लिने र प्रशासक अधिकारीसित परामर्श गरी तिनलाई जाँच्ने;

(ग) प्रशासक अधिकारीसित सम्झौता भए बमोजिम समय समयमा जिम्मा जमानी प्रदेशहरू निरीक्षण गर्न बराबर जाने प्रवन्ध गर्ने; तथा

(घ) जिम्मा जमानी सम्झौताहरूमा शर्तहरू अनुरूप यी र अरू कारवाई गर्ने।



**धारा ८८**

जिम्मा जमानी परिषद्ले प्रत्येक जिम्मा जमानी प्रदेशका बासिन्दाहरूका राजनैतिक आर्थिक, सामाजिक र शैक्षिक उन्नतिबारे एउटा प्रश्नावली बनाउनेछन्, तथा महासभाका अधिकारभित्र रही प्रत्येक जिम्मा जमानी प्रदेशका प्रशासक अधिकारीले यस्तो प्रश्नावलीका आधारमा महासभालाई वार्षिक प्रतिवेदन पठाउनेछन्।

**मतदान**

**धारा ८९**

१. जिम्मा जमानी परिषद्को प्रत्येक सदस्यले एक मत दिन पाउनेछ।

२. जिम्मा जमानी परिषद्को निर्णय उपस्थित र मत दिने सदस्यहरूको बहुसंख्याद्वारा गरिनेछन्।

**कार्यपद्धति**

**धारा ९०**

१. जिम्मा जमानी परिषद्ले, अध्यक्ष छान्ने विधि–समेत, कार्यपद्धति सम्बन्धी आफ्नै नियम प्रयोग गर्नेछ।

२. जिम्मा जमानी परिषद्को बैठक आफ्नै नियम अनुसार आवश्यक पर्दा बस्नेछ । यी नियममा यसका सदस्यहरूको अनुरोधमा बैठक बोलाउने व्यवस्था पनि सम्मिलित छ।

**धारा ९१**

जिम्मा जमानी परिषद्ले, उपयुक्त भएका बखत, आर्थिक र सामाजिक परिषद् तथा विशेषोपयुक्त एजेन्सीहरू सम्बन्धित भएका विषयहरूमा तिनको सहायताबाट लाभ उठाउनेछ।

**चौधौं अध्याय**

**अन्तर्राष्ट्रिय न्यायालय**

**धारा ९२**

अन्तर्राष्ट्रिय न्यायालय संयुक्त राष्ट्रसंघको प्रधान न्यायिक अङ्ग हुनेछ। यसले स्थायी अन्तर्राष्ट्रिय न्यायालयका विधानमा आधारित वर्तमान बडापत्रको अभिन्न भाग भएको सम्वद्ध विधान अनुसार काम गर्नेछ।



**धारा ९३**

१. संयुक्त राष्ट्रसंघका सबै सदस्य स्वत: अन्तर्राष्ट्रिय न्यायालयका पक्ष हुन्छन्।

२. संयुक्त राष्ट्रको सदस्य नभएको राज्य सुरक्षा–परिषद्को सिफारिसमा महासभाले प्रत्येक स्थितिमा निर्धारित गर्ने शर्तमा अन्तर्राष्ट्रिय न्यायालयका विधानको पक्ष हुन सक्तछ।

**धारा ९४**

१. संयुक्त राष्ट्रको प्रत्येक सदस्य आफू पक्ष भएको जुनसुकै मुद्दामा अन्तर्राष्ट्रिय न्यायालयको निर्णय पालन गर्ने प्रतिज्ञा गर्दछ।

२. मुद्दाको कुनै पक्षले, न्यायालयले गरेका निर्णय बमोजिम आफू माथि पर्न आएका दायित्व पूरा नगरेका खण्डमा अर्को पक्षले सुरक्षा–परिषद्को शरण लिन सक्तछ, र सुरक्षा–परिषद्ले आवश्यक ठानेमा, निर्णय कार्यान्वित गर्न उठाइने कदमबारे सिफारिस वा निर्णय गर्न सक्तछ।

**धारा ९५**

वर्तमान बडापत्रमा कुनै कुराले पनि संयुक्त राष्ट्रका सदस्यहरूलाई, पहिले नै भइरहेका वा भविष्यमा गरिने सम्झौताको आधारमा अन्य विशेष न्यायाधिकरणलाई आफ्ना मतभेद समाधानका लागि सुम्पनबाट रोक्ने छैन ।

**धारा ९६**

१. महासभा अथवा सुरक्षा–परिषद्ले कुनै पनि कानूनी प्रश्नमा परामर्श दिन अन्तर्राष्ट्रिय न्यायालयलाई अनुरोध गर्न सक्तछ ।

२. संयुक्त राष्ट्रका अरू अङ्गहरू र विशेषोपयुक्त एजेन्सीहरूले पनि, कुनै बखत महासभाबाट अधिकार पाएमा, आफ–आफ्ना कार्य क्षेत्रभित्र उठेका कानूनी प्रश्न उपर परामर्श दिन न्यायालयलाई अनुरोध गर्न सक्तछन् ।

**पन्ध्रौं अध्याय**

**सचिवालय**

**धारा ९७**

सचिवालयमा महासचिव र संघलाई चाहिए जति कर्मचारी हुनेछन् । महासभाले सुरक्षा–परिषद्को सिफारिसमा महासचिवको नियुक्ति गर्नेछ । उनी संघका मुख्य प्रशासकीय अधिकारी हुनेछन् ।

**धारा ९८**

महासचिवले यस हैसियतमा महासभाका, सुरक्षा–परिषद्का, आर्थिक तथा सामाजिक परिषद् र न्यास–संरक्षण–परिषद्का अधिवेशनहरूमा काम गर्नेछन्, तथा यी अङ्गहरूले तिनलाई सुम्पिएजति अरू काम पनि गर्नेछन् । महासचिवले संघका काम बारे वार्षिक प्रतिवेदन महासभामा पेश गर्नेछन् ।

**धारा ९९**

महासचिवले आफ्नो बिचारमा लागेको अन्तर्राष्ट्रिय शान्ति सुरक्षामा खलल गर्न सक्ने जुनसुकै विषय पनि सुरक्षा–परिषद्को ध्यानमा ल्याउन सक्तछन् ।

**धारा १००**

१. महासचिव र कर्मचारीहरूले आफ्ना कर्तव्यको पालनामा कुनै सरकारबाट वा संघभन्दा बाहिरका अरू कुनै अधिकारीबाट आदेश खोज्ने वा लिनेछैनन् । संघप्रति मात्र उत्तरदायी भएका अन्तर्राष्ट्रिय अधिकारीका रूपमा उनीहरूले आफ्नो ओहोदामा दोषारोप हुने कुनै काम गर्ने छैनन् ।

२. संयुक्त राष्ट्रसंघको प्रत्येक सदस्य महासचिव र कर्मचारीहरूका उत्तरदायित्वको अनन्य अन्तर्राष्ट्रिय रूपलाई सम्मान गर्न तथा तिनका उत्तरदायित्वको पालनामा तिनमाथि प्रतिकूल प्रभाव पार्ने चेष्टा नगर्न प्रतिज्ञा गर्दछ ।

**धारा १०१**

१. कर्मचारीहरू महासचिवले महासभाद्वारा स्थापित विनियम अनुसार नियुक्त गरिनेछन् ।

२. उपयुक्त कर्मचारीहरू आर्थिक तथा सामाजिक परिषद् न्यास–संरक्षण परिषद्, तथा चाहिएजति संयुक्त राष्ट्रका अरू अङ्गहरूलाई स्थायीरूपले दिनेछन् । यी कर्मचारीहरू सचिवालयका अङ्ग हुनेछन् ।

३. कर्मचारीहरूको नियुक्तिमा र सेवाका शर्तका निर्धारणमा दक्षता, निपुणता र इमान्दारीका सर्वोच्च स्तर हासिल गर्नु आवश्यक हुनेछ । सकेसम्म विस्तृत भौगोलिक आधारमा कर्मचारीहरू नियुक्त गर्ने महत्त्वमाथि समुचित ध्यान दिइनेछ ।



**सोह्रौं अध्याय**

**विविध व्यवस्थाहरू**

**धारा १०२**

१. वर्तमान बडापत्र लागू भएपछि संयुक्त राष्ट्रसंघको प्रत्येक सदस्य सामेल भएको हरेक सन्धि र हरेक अन्तर्राष्ट्रिय सम्झौता सकेसम्म चाँडो सचिवालयमा दर्ता भई यसद्वारा प्रकाशित हुनेछ ।

२. यस धाराको अनुच्छेद १ का उपबन्ध बमोजिम दर्ता नभएको कुनै सन्धि वा अन्तर्राष्ट्रिय सम्झौताका कुनै पक्षले सो सन्धि वा सम्झौताको आश्रय संयुक्त राष्ट्रका कुनै अङ्गको समक्ष लिन सक्तैन ।

**धारा १०३**

वर्तमान बडापत्र अन्तर्गत संयुक्त राष्ट्रसंघका सदस्यहरूको दायित्त्व र अरू कुनै अन्तर्राष्ट्रिय सम्झौता अन्तर्गतका दायित्त्व बाझिएका अवस्थामा वर्तमान बडापत्र अन्तर्गतका दायित्त्व मान्य हुनेछन् ।

**धारा १०४**

संघले आफ्ना सदस्यहरू प्रत्येकको इलाकामा, आफ्नो कर्तव्य पालन र आफ्ना प्रयोजनका लागि आवश्यक कानूनी क्षमताको उपयोग गर्नेछ।

**धारा १०५**

१. संघले आफ्ना सदस्यहरूको इलाकामा, आफ्ना प्रयोजन पूर्तिका लागि आवश्यक विशेषाधिकार र छुटको उपभोग गर्नेछ।

२. संयुक्त राष्ट्रसंघका सदस्यका प्रतिनिधिहरू र संघका कर्मचारीहरूले संघ सम्बन्धी आफ्ना कामको स्वतन्त्र प्रयोगका लागि आवश्यक विशेषाधिकार छुटको उपभोग यसै किसिमले गर्नेछन्।

यस धाराका अनुच्छेद १ र २ को प्रयोग सम्बन्धी विस्तृत विवरण तयार गर्नाका लागि महासभाले सिफारिस गर्न सक्तछ वा यस प्रयोजनका लागि संयुक्त राष्ट्रका सदस्यहरूसित सम्झौता प्रस्ताव गर्न सक्तछ।

**सत्रौं अध्याय**

**सङ्क्रमणकालीन सुरक्षा प्रवन्ध**

**धारा १०६**

सुरक्षा–परिषद्को रायमा धारा ४२ अन्तर्गत आफ्ना उत्तरदायित्वको प्रयोग आरम्भ गर्न सक्ने तुल्याउने धारा ४३ मा निर्दिष्ट विशेष सम्झौताहरू लागू हुन बिचाराधीन होउञ्जेल मास्कोका सन् १९४३ अक्टोबर ३० मा हस्ताक्षर गर्ने 'चार राष्ट्र घोषणा' का पक्षहरूले तथा फ्रान्सले त्यस घोषणाको अनुच्छेद ५ का उपबन्ध अनुसार आफू आफूमा र अन्तर्राष्ट्रिय शान्ति सुरक्षा कायम राख्ने प्रयोजनका निमित्त आवश्यक भए मुताबिक, संघका पक्षमा संयुक्त कारवाई गर्नाका लागि संयुक्त राष्ट्रका अरू सदस्यहरूसित परामर्श गर्नेछन्।

**धारा १०७**

द्वितीय विश्वयुद्धको समयमा वर्तमान बडापत्रका कुनै हस्ताक्षरकर्ताका शत्रु भएको जुनसुकै राज्यको सम्बन्धमा कारवाई गर्न उत्तरदायित्त्व पाएका सरकारहरूले गरेको वा सो युद्धको परिमाण स्वरूप अधिकार पाएको कारवाईलाई वर्तमान बडापत्रको केही कुराले पनि बदर वा वहिष्कार गर्नेछैन।

## अठारौं अध्याय

## संशोधन

### धारा १०८

वर्तमान बडापत्रमा संशोधनहरू महासभाका द्वि–तृतीयांश सदस्यको मतदानबाट पारित भएर, सुरक्षा–परिषद्का सबै स्थायी सदस्यहरू समेत, संयुक्त राष्ट्रसंघका द्वि–तृतीयांश सदस्यले आफ्–आफ्ना संवैधानिक प्रक्रियाअनुसार अनुमोदन भएपछि संयुक्त राष्ट्रसंघका सबै सदस्यहरूका निमित्त लागू हुनेछन्।

### धारा १०९

१. महासभाका सदस्यहरूको द्वि–तृतीयांश मतले र सुरक्षा–परिषद्का कुनै नौ सदस्यको मतले, तोकिएका मिति र स्थानमा, वर्तमान बडापत्रलाई पुनरावलोकन गर्नाका लागि संयुक्त राष्ट्रसंघका सदस्यहरूको महासम्मेलन बोलाउन सकिनेछ।

२. सम्मेलनका द्वि–तृतीयांश मतले सिफारिस गरिएको वर्तमान बडापत्रको कुनै परिवर्तन, सुरक्षा–परिषद्का सबै स्थायी सदस्य समेत संयुक्त राष्ट्रसंघको द्वि–तृतीयांश सदस्यहरूद्वारा आफ–आफ्ना संवैधानिक रीतिअनुसार अनुमोदित भएपछि लागू हुनेछ।

३. वर्तमान बडापत्र लागू भएदेखि महासभाको दसौं वार्षिक अधिवेशनसम्ममा यस्तो सम्मेलन नबोलाइएको भए महासभाको त्यस अधिवेशनको कार्यसूचीमा यस्तो सम्मेलन बोलाउने प्रस्ताव राखिनेछ, तथा महासभाका सदस्यहरूका बहुमतले र सुरक्षा–परिषद्का कुनै सात सदस्यको एक मतले बोलाउने निर्णय भएमा सम्मेलन बोलाइनेछ।

## उन्नाईसौं अध्याय

## अनुमोदन र हस्ताक्षर

### धारा ११०

१. वर्तमान बडापत्र, हस्ताक्षर गर्ने राज्यहरूद्वारा आफ–आफ्ना संवैधानिक रीतिअनुसार अनुमोदित हुनेछ।

२. अनुमोदनहरू संयुक्त राज्य अमेरिकाको सरकारसित थाति राखिनेछन्। यसले प्रत्येक थातिबारे हस्ताक्षर गर्ने सारा राज्यलाई र संघका महासचिव नियुक्त भएपछि निजलाई सूचित गर्नेछ।

३. थाती रहेका अनुमोदनहरू चीन, फ्रान्स, सोभियत समाजवादी गणतन्त्र संघ, ग्रेट ब्रिटेन र उत्तरी आयरल्याण्डको संयुक्त अधिराज्य तथा संयुक्त राज्य अमेरिका, एवं अरू हस्ताक्षर गर्ने बहुसंख्यक राज्यहरूद्वारा अनुसमर्थित अनुमोदनहरू थाती राखिएपछि वर्तमान बडापत्र लागू हुनेछ। यसो भएपछि थाति राखिएका अनुमोदनहरूको मूल लिपि संयुक्त राज्य अमेरिकाले तयार गरी त्यसका प्रतिलिपि सारा हस्ताक्षर गर्ने राज्यहरूलाई पठाइदिनेछ।

४. वर्तमान बडापत्र लागू भएपछि यसलाई अनुमोदन गर्ने यस पत्रका हस्ताक्षरकर्ता राज्यहरू आफू–आफूले अनुमोदन थाति राखेका मितिमा संयुक्त राष्ट्रसंघका मूल सदस्य हुनेछन्।

**धारा १११**

चिनिया, फ्रान्सेली, रसियाली, अङ्ग्रेजी र स्पेनी मूल प्रति पनि समान रूपले अधिकारिक भएको वर्तमान बडापत्र संयुक्त राज्य अमेरिका सरकारको अभिलेखालयमा थाति रहनेछ। त्यसका राम्ररी प्रमाणित प्रतिहरू त्यस सरकारले अरू हस्ताक्षरकर्ता राज्यहरूलाई पठाउनेछ।

यसको श्रद्धा र विश्वासमा संयुक्त राष्ट्रका सरकारहरूका प्रतिनिधिहरूले वर्तमान बडापत्रमा हस्ताक्षर गरेका छन्।

स्यानफ्रान्सिस्को नगरमा एकहजार नौसय पैंतालीस्, जूनको छब्बीसौं दिनमा (यो कार्य) सम्पन्न भयो।